# मङ्गलचण्डिका स्तोत्रम्*

अथ एकविंशाक्षरी महामन्त्रः

**"ॐ ह्रीं श्रीं क्लीं सर्वपूज्ये देवि मङ्गलचण्डिके ऐं क्रूं फट् स्वाहा ॥"**

अथ ध्यानम्

**देवीं षोडशवर्षीयां रम्यां सुस्थिरयौवनाम् ।**
**सर्वरूपगुणाढ्यां च कोमलाङ्गीं मनोहराम् ॥१॥**
**श्वेतचम्पकवर्णाभां चन्द्रकोटिसमप्रभाम् ।**
**वन्हिशुद्धांशुकाधानां रत्नभूषणभूषिताम् ॥२॥**
**बिभ्रतीं कबरीभारं मल्लिकामाल्यभूषितम् ।**
**बिम्बोष्ठीं सुदतीं शुद्धां शरत्पद्मनिभाननाम् ॥३॥**
**ईषद्धास्यप्रसन्नास्यां सुनीलोत्पललोचनाम् ।**
**जगद्धात्रीं च दात्रीं च सर्वेभ्यः सर्वसंपदाम् ॥**
**संसारसागरे घोरे पोतरूपां वरां भजे ॥४॥**

अथ स्तोत्रम्

**रक्ष रक्ष जगन्मातर्देवि मङ्गलचण्डिके ।**
**संहर्त्रि विपदां राशेर्हर्षमङ्गलकारिके ॥५॥**
**हर्षमङ्गलदक्षे च हर्षमङ्गलचण्डिके ।**
**शुभे मङ्गलदक्षे च शुभमङ्गलचण्डिके ॥६॥**
**मङ्गले मङ्गलार्हे च सर्वमङ्गलमङ्गले ।**
**सतां मङ्गलवे देवि सर्वेषां मङ्गलालये ॥७॥**
**पूज्या मङ्गलवारे च मङ्गलाभीष्टदेवते ।**
**पूज्ये मङ्गलभूपस्य मनुवंशस्य संततम् ॥८॥**
**मङ्गलाधिष्ठातृदेवि मङ्गलानां च मङ्गले ।**
**संसारमङ्गलाधारे मोक्षमङ्गलदायिनि ॥९॥**
**सारे च मङ्गलाधारे पारे त्वं सर्वकर्मणाम् ।**
**प्रतिमङ्गलवारे च पूज्ये त्वं मङ्गलप्रदे ॥१०॥**

अथ फलश्रुतिः

**देव्याश्च मङ्गलस्तोत्रं यः श्रृणोति समाहितः ।**
**तन्मङ्गलं भवेच्छश्वन्न भवेत्तदमङ्गलम् ॥११॥**
**देव्याश्च मङ्गलस्तोत्रं यः श्रृणोति समाहितः ।**
**वर्धन्ते तत्पुत्रपौत्रा मङ्गलं च दिनेदिने ॥१२॥**

इति श्रीब्रह्मवैवर्तमहापुराणे प्रकृतिखण्डे मङ्गलचण्डिका स्तोत्रं संपूर्णम् ॥

सोह्र वर्षकी रमणीक, स्थिर यौवनवाली, कोमलाङ्गी, मनोहारिणी एवं समस्त गुणले युक्त भएकी, श्वेतचम्पा पुष्प जस्तो रुपरङ्ग भएकी, करोडौं चन्द्रमा समान कान्ति भएकी, अग्निको झैँ विशुद्ध उज्याला वस्त्र एवं रत्नका आभुषणहरुले सुशोभित, केशपाश (सुन्दर काँटा) एवं मल्लिका (चमेली फूल)को माला लगाएकी, बिम्बाफल (गोलकाँक्री, कुन्दुरु)को जस्तै ओठ एवं सुन्दर दन्तलहर भएकी, शुद्ध स्वरूपा, शारदीय कमलमुखी, मन्द मुस्कुराएकी प्रसन्न रहेकी (प्रसन्ना), नीलकमलनयनी, जगतलाई धारण गर्ने, समस्त सुख-सम्पदाकी दात्री तथा यो घोर संसार-सागर (भवसागर) पार गराउन डुंगा रूप भएकी यस्ती देवीको म वन्दना गर्दछु ॥१-४॥

हे मङ्गलचण्डिके देवी ! समस्त विपत्तिका रासहरुलाई नाश गरेर हर्ष र मङ्गल गर्ने हजुर ! जगतकी माता हुनुहुन्छ, मेरो रक्षा गर्नुहोस् । हर्ष र मङ्गल प्रदान गर्न दक्ष हर्ष र मङ्गलचण्डी स्वरूपा हुनुहुन्छ, शुभमङ्गल दिन दक्ष शुभमंगलचण्डी हुनुहुन्छ । मङ्गलमूर्ति, मङ्गलकी योग्य, समस्त मङ्गलहरुकी पनि मङ्गल, सज्जनहरुलाई मङ्गलदात्री एवं सबैकी मङ्गलनिधि हुनुहुन्छ । मङ्गलवार हजुरको पूजा हुन्छ, हजुर मंगलको इष्टदेवता हुनुहुन्छ अनि मनुबाट उत्पन्न राजा मङ्गलको पूज्या हुनुहुन्छ । हे मङ्गलकी अधिष्ठात्री देवी ! हजुर मङ्गलको लागी पनि मङ्गलरूपा, संसारकी मङ्गलाधार एवं मोक्षमङ्गल दिनेवाली, सबको सार, सबै कर्मदेखी भिन्नै एवं प्रत्येक मङ्गलवारमा पूज्य मङ्गलप्रदायिनी हुनुहुन्छ ॥५-१०॥

देवीको यो मङ्गल-स्तोत्र जसले सावधान भएर ध्यानपूर्वक सुन्दछ, उसको निरन्तर मङ्गल हुन्छ र अमङ्गल कहिल्यै हुँदैन । मङ्गल संगसँगै उसका पुत्रपौत्रादि पनि दिनदिनै बढ्दै जान्छन् ॥११-१२॥

* यो मङ्गलचण्डिका मन्त्र तथा स्तोत्र मङ्गल ग्रहको शान्ति एवं माङ्गलिक जातकहरुलाई प्रतिदिन पाठ गर्नु विशेष लाभप्रद हुन्छ ।

**नमो मङ्गलचण्डिकायै ॥**

ॐ